# अन्तर्राष्ट्रिय न्यायालयको विधान

## धारा १

संयुक्त राष्ट्रसंघको प्रधान न्यायिक अङ्गको रूपमा संयुक्त राष्ट्रको बडापत्रद्वारा स्थापित अन्तर्राष्ट्रिय न्यायालयले वर्तमान विधानका उपबन्ध अनुसार गठित भई काम गर्नेछ ।

## प्रथम अध्याय

## न्यायालयको संगठन

## धारा २

राष्ट्रियताको बिचार नगरी उच्च नैतिक चरित्रका व्यक्तिहरूमध्येबाट निर्वाचित भएका स्वतन्त्र न्यायाधीशहरूको समूहबाट यो न्यायालयको गठन हुनेछ । यी व्यक्तिहरू आफ्-आफ्ना मुलुकका सर्वोच्च न्यायिक पदमा नियुक्ति पाउन चाहिने योग्यता भएका अथवा अन्तर्राष्ट्रिय कानूनमा मान्यता प्राप्त योग्यता भएका ऐन कानूनका विद्वान हुनुपर्दछ ।



## धारा ३

१. न्यायालयमा पन्ध्रजना सदस्य हुनेछन् । यिनमध्ये कुनै दुई एकै राज्यका नागरिक हुनेछैनन् ।

२. न्यायालयको सदस्यताका प्रयोजनको लागि एक भन्दा बढ्ता राज्यका नागरिक मानिन सक्ने व्यक्ति जुन राज्यमा साधारणतया व्यावहारिक र राजनैतिक हक प्रयोग गर्दछन् उसैका नागरिक मानिनेछन् ।

## धारा ४

१. न्यायालयका सदस्यहरू, तलका उपबन्ध अनुसार, "मध्यस्थताको स्थायी न्यायालय" मा राष्ट्रिय वर्गद्वारा मनोनीत व्यक्तिहरूको सूचीबाट महासभा र सुरक्षा परिषद्द्वारा निर्वाचित हुनेछन् ।

२. मध्यस्थताको स्थायी न्यायालयमा प्रतिनिधित्व नभएका संयुक्त राष्ट्रसंघका सदस्यहरूका हकमा अभ्यर्थीहरू, अन्तर्राष्ट्रिय झगडाको शान्तिपूर्ण छिनाफानाको लागि सन् १९०७ का "द हेगको सम्झौता" को धारा ४४ ले मध्यस्थताको स्थायी न्यायालयका सदस्यहरूको निमित्त निर्धारित भएकै शर्तमा आफ-आफ्ना सरकारले यस प्रयोजनका लागि गठित राष्ट्रिय वर्गहरूद्वारा मनोनीत हुनेछन् ।

३. वर्तमान विधानको पक्ष भएको तर संयुक्त राष्ट्रसंघको सदस्य नभएको राज्यले न्यायालयका सदस्यहरू निर्वाचनमा भागलिन सक्ने शर्तहरू, विशेष सम्झौताको अभावमा, सुरक्षा-परिषद्का सिफारिसमा महासभाले निर्धारित गर्नेछ ।

## धारा ५

१. निर्वाचनको मितिभन्दा कमसे कम तीन महिना अगाडि संयुक्त राष्ट्रका महासचिवले वर्तमान विधानका पक्ष भएका राज्यहरूका मध्यस्थताको स्थायी न्यायालयका सदस्यहरूलाई दिइएको समय-भित्र, राष्ट्रिय समूहहरूद्वारा, न्यायालयको सदस्यको कर्तव्य स्वीकार गर्न सक्ने व्यक्तिहरूलाई मनोनीत गर्न लिखित अनुरोध गर्नेछन् ।

२. कुनै समूहले पनि चारजनाभन्दा बढ्ता मनोनीत गर्न सक्तैन, तिनमा दुईजनाभन्दा बढ्ता आफ्नै राष्ट्रियताका हुनु हुँदैन । कुनै अवस्थामा पनि कुनै समूहले मनोनीत गरेका अभ्यर्थीहरूको संख्या भरिनपर्ने स्थानको दोब्बर संख्याभन्दा बढ्ता हुन सक्तैन ।

## धारा ६

यी मनोनयन गर्नु भन्दा अगाडि प्रत्येक राष्ट्रिय समूहलाई आफ्ना सर्वोच्च न्यायालय, आफ्ना कानूनी निकाय र आफ्ना राष्ट्रिय एकेडेमी तथा कानूनको अध्ययनमा लागेका अन्तर्राष्ट्रिय एकेडेमीहरूका राष्ट्रिय विभागसित परामर्श गर्न सिफारिस गरिन्छ ।

## धारा ७

१. यसरी मनोनीत सबै व्यक्तिको एउटा सूची वर्णानुक्रमबाट महासचिवले प्रस्तुत गर्नेछन् । धारा १२, अनुच्छेद २ मा दिइएबाहेक यिनै मात्र छानिन योग्य व्यक्ति हुनेछन् ।

२. महासचिवले यो सूची महासभामा र सुरक्षा परिषद्मा पेश गर्नेछन् ।

## धारा ८

न्यायालयका सदस्यहरू निर्वाचन गर्न महासभा र सुरक्षा परिषद्ले स्वतन्त्रतापूर्वक कारवाई गर्नेछन् ।

## धारा ९

प्रत्येक निर्वाचनमा, निर्वाचित हुने व्यक्तिहरूमा व्यक्तिगत रूपले चाहिने योग्यता हुनपर्ने मात्र होइन कि पूरा संस्थानै मुख्य मुख्य सभ्यताका रूप र संसारका प्रमुख कानूनी प्रणालीको प्रतिनिधित्व निहित छ भन्ने कुरामा निर्वाचकहरूले ध्यान दिनेछन् ।

## धारा १०

१. महासभा र सुरक्षा-परिषद्मा पूर्ण बहुमत प्राप्त गर्ने अभ्यर्थीहरू निर्वाचित भएको मानिनेछन् ।

२. धारा १२ मा उल्लेख गरिएका सम्मेलनका सदस्यहरूको नियुक्ति होस् वा न्यायाधीशहरूको निर्वाचनमा होस्, सुरक्षा-परिषद्को कुनै पनि मत सुरक्षा-परिषद्का स्थायी र अस्थायी सदस्यहरूमा भेदभाव नगरी लिइनेछ ।

३. उही राज्यका एकभन्दा बढी नागरिकले महासभा र सुरक्षा-परिषद् दुवैको पूर्ण बहुसंख्यक मत प्राप्त गरेको खण्डमा तिनमध्ये ज्येष्ठचाहि मात्र निर्वाचित भएको मानिनेछ ।

## धारा ११

निर्वाचनको प्रयोजनका निमित्त बसेको पहिलो बैठकपछि एक वा बढ्ता स्थान भरिन बाँकी भएमा, दोस्रो र आवश्यक परेमा तेस्रो बैठक पनि बस्नेछ ।

## धारा १२

१. तेस्रो बैठकपछि पनि एक वा बढ्ता स्थान खालि रहेमा महासभाले नियुक्त गरेका तीनजना र सुरक्षा परिषद्ले नियुक्त गरेका तीनजना, जम्मा ६ जना सदस्यहरूको संयुक्त समिति महासभा वा सुरक्षा परिषद्को अनुरोध गठन गर्न सकिनेछ । समितिले महासभा र सुरक्षा परिषद्मा स्वीकृतिका लागि प्रत्येक खालि स्थानका लागि एक नाम पूर्ण बहुमतले पेश गर्नेछ ।

२. आवश्यक शर्त पूरा गर्ने कुनै व्यक्तिको एक मतले संयुक्त समिति सहमत भयो भने धारा ७ मा निर्दिष्ट मनोनीत व्यक्तिहरूको सूचीमा उक्त व्यक्ति सम्मिलित नगरिएको भए पनि त्यसमा तिनको नाम सम्मिलित गरिन सक्तछ ।

३. संयुक्त समितिले मानिस निर्वाचमन गर्न सफल हुन नसक्ने देखेमा, निर्वाचित भइसकेका न्यायालयका सदस्यहरूले सुरक्षा-परिषद्ले तोकिने अवधिभित्र, महासभामा अथवा सुरक्षा-परिषद्मा मत प्राप्त गरेका अभ्यर्थीहरूमध्येबाट छानी खाली स्थान भर्ने कारवाई गर्नेछन् ।

४. न्यायाधीशहरूमध्ये मत समान भएका अवस्थामा ज्येष्ठ न्यायाधीशले निर्णायक मत दिनेछन् ।



## धारा १३

१. न्यायालयका सदस्यहरू नौ वर्षका लागि निर्वाचित हुनेछन् । तथा पुनर्निवाचित हुन सक्नेछन्; तर, पहिले निर्वाचनमा निर्वाचित न्यायाधीशहरूमध्ये पाँचजनाको अवधि तीन वर्षको अन्तमा समाप्त हुनेछ, तथा अरू पाँचजना न्यायाधीशको अवधि छ वर्षको अन्तमा समाप्त हुनेछ ।

२. माथि उल्लेख गरिएका तीन वा ६ वर्षका प्रारम्भिक अवधिको अन्तमा अवधि समाप्त हुने न्यायाधीशहरूलाई पहिलो निर्वाचन पूरा हुने बित्तिकै महासचिवले गोलाहालेर छान्नेछन् ।

३. न्यायालयका सदस्यहरू आफ्ना स्थान नभरिउन्जेल आफ्ना कर्तव्य पालनमा संलग्न रहनेछन् । आफ्ना स्थानमा अन्य व्यक्ति आइसकेतापनि उनीहरूले आफूले थालेका मुद्दाहरू आफैंले टुङ्ग्याउनेछन् ।

४. न्यायालयका कुनै सदस्यले राजीनामा गरेका खण्डमा राजीनामा न्यायालयका अध्यक्ष मार्फत महासचिव समक्ष पेश गरिनेछ । यो अन्तिम सूचनाले स्थान रिक्त पार्छ ।

## धारा १४

तलका उपबन्धभित्र रही, रिक्त स्थान प्रथम निर्वाचनका निमित्त बनेका विधि अनुसारै भरिनेछन्: स्थान रिक्त भएको एक महिनाभित्र महासचिवले धारा ५ मा दिइए बमोजिम आमन्त्रण पठाउन कारवाई गर्नेछन् तथा निर्वाचनको मिति सुरक्षा-परिषद्द्वारा तोकिनेछ ।

## धारा १५

पदावधि समाप्त नभएका सदस्यको रिक्त ठाउँमा निर्वाचित न्यायालयका सदस्यले आफ्ना साविकवालाको शेष अवधिसम्म पद सम्हाल्ने छन् ।

## धारा १६

१. न्यायालयका कुनै सदस्यले पनि कुनै राजनैतिक वा प्रशासकीय काम गर्ने छैनन्, अथवा व्यावसायिक रूपको अन्य कुनै पेशामा लाग्ने छैनन् ।

२. यस प्रश्नको कुनै शङ्का न्यायालयको निर्णयद्वारा समाधान गरिनेछ ।

## धारा १७

१. न्यायालयका कुनै सदस्यले अभिकर्ता (एजेन्ट), परामर्शद्वारा वा अधिवक्ता भएर काम गर्ने छैनन् ।

२. पहिले कुनै पक्षका अभिकर्ता परामर्शद्वारा वा अधिवक्ता भएर, अथवा राष्ट्रिय वा अन्तर्राष्ट्रिय न्यायालय, वा छानबीन आयोगका सदस्य भएर, वा अन्य कुनै हैसियतमा काम गरेका कुनै सदस्यले त्यस्तो कुनै मुद्दाको निर्णयमा भागलिने छैनन् ।

३. यस प्रश्नको शङ्का न्यायालयको निर्णयद्वारा समाधान गरिनेछ ।

## धारा १८

१. न्यायालयका कुनै सदस्य, अरू सदस्यहरूको सर्वसम्मत बिचारमा निजले आवश्यक शर्त पूरा गर्न नछोडुन्जेल, खोसिने छैनन् ।

२. यसबारे औपचारिक सूचना महासचिवलाई रजिष्ट्रारद्वारा गरिनेछ ।

३. यस्तो सूचनाले सो स्थान रिक्त गर्दछ ।

## धारा १९

न्यायालयका काममा संलग्न हुँदा, न्यायालयका सदस्यहरूले कुटनैतिक विशेषाधिकार र छुटहरूको उपभोग गर्नेछन् ।

## धारा २०

न्यायालयका प्रत्येक सदस्यले आफ्नो कार्यभार सम्भाल्नुभन्दा अगाडि, म आफ्ना अधिकारहरू निष्पक्षत: तथा विवेकसाथ प्रयोग गर्नेछु भनी खुला न्यायालयमा प्रतीज्ञा गर्नेछन् ।

## धारा २१

१. न्यायालयले आफ्ना अध्यक्ष र उपाध्यक्षको तीन वर्षका निमित्त निर्वाचन गर्नेछन्; तिनीहरू पुनर्निर्वाचित हुन सक्तछन् ।

२. न्यायालयले आफ्नो रजिष्ट्रार नियुक्त गर्नेछ । तथा आवश्यक पर्ने अरू अधिकारीहरूका नियुक्तिको व्यवस्था गर्न सक्छ ।

## धारा २२

१. न्यायालयको कार्य स्थल द हेगमा स्थापित हुनेछ । तर, न्यायालयले वाञ्छनीय ठानेका बखत यसले न्यायलयलाई अन्त कहीं बस्न र काम गर्नबाट रोक्नेछैन ।

२. अध्यक्ष र रजिष्ट्रार न्यायालयका स्थानमा बस्नेछन् ।

## धारा २३

१. न्यायिक बिदामा बाहेक, न्यायालय स्थायी रूपले अधिवेशनमा रहनेछ । बिदाका मिति र अवधि न्यायलयले तोक्नेछ ।

२. न्यायालयका सदस्यहरूले सावधिक बिदा पाउनेछन् । बिदाका मिति र अवधि द हेग र प्रत्येक न्यायाधीशका घरको दूरी ध्यानमा राखेर न्यायालयले तोक्नेछ ।

३. बिदामा बसेका अथवा अध्यक्षलाई उचित रूपले जनाइएको बिरामी वा अरू गम्भीर कारणले गर्दा हाजिर हुन बाधा परेको अवस्था बाहेक, न्यायालयका सारा सदस्यहरू न्यायालयका अधीनमा रहन बाध्य हुनेछन् ।

## धारा २४

१. कुनै खास कारणले, गर्दा, न्यायालयका कुनै सदस्यले कुनै विशेष मुद्दाको निर्णयमा आफू बस्न हुँदैन भन्ने ठानेमा निजले सो कुरा अध्यक्षलाई सूचित गर्नेछन् ।

२. कुनै विशेष कारणले गर्दा, न्यायालयका सदस्यहरूमध्ये कसैले कुनै विशेष मुद्दामा बस्नु हुँदैन भन्ने  अध्यक्षले ठानेमा निजले तिनलाई सोही मुताबिक सूचना दिनेछन् ।

३. यदि कुनै यस्ता मुद्दामा न्यायालयका सदस्य र अध्यक्षको राय बाझिएमा सो विषय न्यायालयको निर्णयद्वारा छिनिनेछ ।

## धारा २५

१. वर्तमान विधानमा किटेर अन्यथा उपबन्धित भएकामा बाहेक पूरा न्यायालय बस्नेछ।

२. न्यायालय बस्न प्राप्य न्यायाधीशहरूको संख्या  एघार तल घटाउन हुँदैन भन्ने शर्तभित्र रही, न्यायालयका नियमहरूले, परिस्थितिअनुसार र पालैसित, एक वा बढ्ता न्यायाधीश नबसे पनि हुने व्यवस्था गर्न सकिनेछ।

३. नौ न्यायाधीशको गणपूरक संख्या न्यायालय बस्न पर्याप्त हुनेछ।

## धारा २६

१. विशेष मुद्दाहरू हेर्न, न्यायालयले निर्धारित गरेबमोजिम तीन वा बढी न्यायाधीश भएको एक वा बढी मण्डल (चेम्बर) न्यायालयले समय समयमा गठन गर्न सक्तछ । उदाहरणका निमित्त श्रमिक मुद्दाहरू तथा यातायात र सञ्चार सम्बन्धी मुद्दाहरू।

२. कुनै विशेष मुद्दा हेर्न न्यायालयले जहिलेसुकै पनि एक मण्डल गठन गर्न सक्तछ । यस्तो मण्डल गठन गर्दा न्यायाधीशहरूको संख्या पक्षहरूका स्वीकृतिले न्यायालयद्वारा निर्धारित गरिनेछ।

३. पक्षहरूले अनुरोध गरेमा यस धारा अन्तर्गत गठित मण्डलहरूले मुद्दा सुनेर टुङ्ग्याउने छन्।

## धारा २७

धारा २६ र २९ मा उल्लिखित मण्डलहरूमध्ये कुनैले दिएको निर्णय न्यायालयले गरेको मानिनेछ।

## धारा २८

धारा २६ र २९ मा उल्लिखित मण्डलले पक्षहरूको स्वीकृतिले द हेग भन्दा अन्तै पनि बसेर आफ्नो काम गर्न सक्तछन् ।

## धारा २९

काम कारवाई छिटो छिटो फर्छ्याउने अभिप्रायले न्यायालयले बर्सौनि पाँच न्यायाधीशको एक मण्डल गठन गर्नेछ । यस मण्डलले पक्षहरूको अनुरोधमा, संक्षिप्त कार्यपद्धतिले मुद्दा सुन्न र टुङ्ग्याउन सक्तछ  साथै मण्डलमा बस्न सम्भव नहुने न्यायाधीशहरूलाई पालो फेर्नाका निमित्त दुईजना न्यायाधीश छानिने छन् ।

## धारा ३०

१. न्यायालयले आफ्नो काम चलाउन नियमहरू बनाउनेछ । विशेषत: यसले कार्यपद्धति सम्बन्धी नियमहरू निर्धारित गर्नेछ ।

२. न्यायलयका नियमहरू अनुसार न्यायालय अथवा यसका मण्डलहरूमा मत दिने हक नहुने गरी परामर्शक बस्न पाइनेछ ।

## धारा ३१

१. पक्षहरूमध्ये प्रत्येकको राष्ट्रियताका न्यायाधीशहरूले न्यायालय समक्ष पेश मुद्दामा बस्ने आफ्नो अधिकार कायम राख्नेछन् ।

२. न्यायालयले एक पक्षको राष्ट्रियताका न्यायाधीशलाई बेञ्चमा सम्मिलित गरायो भने अर्को पक्षले कुनै व्यक्तिलाई  न्यायाधीश भएर बस्न रोज्न सक्तछ । सकेसम्म यस्ता व्यक्ति धारा ४ र ५ मा व्यवस्था भए बमोजिम अभ्यर्थी मनोनीत भएका व्यक्तिहरूमध्येबाट रोजिनेछन् ।

३. न्यायालयले पक्षहरूको राष्ट्रियता भएको कुनै न्यायाधीशलाई बेञ्चमा सम्मिलित नगराएमा यी पक्षहरूमध्ये प्रत्येकले यस धाराको अनुच्छेद २ मा व्यवस्था गरिए अनुसार न्यायाधीश रोज्ने कारवाई गर्न सक्तछ ।

४. यस धाराका उपबन्धहरू धारा २६ र २९ का मुद्दामा लागू हुनेछन् । यस्ता मुद्दाहरूमा अध्यक्षले मण्डल गठन गर्ने न्यायालयका सदस्यहरूमध्ये एक वा आवश्यक परेमा, दुईजनालाई सम्बन्धित पक्षहरूका राष्ट्रियताको न्यायालयका सदस्यहरूलाई, तथा सो हुन नसकेमा, वा निजहरू उपस्थित हुन असमर्थ भएमा, पक्षहरूले विशेषत: रोजेका न्यायाधीशहरूलाई, स्थान दिन अनुरोध गर्नेछ ।

५. एउटै स्वार्थमा धेरै पक्ष भएमा अघि भएका उपबन्धहरूको प्रयोजनका निमित्त तिनीहरू एउटै पक्ष मानिनेछन् । यस प्रश्नमाथि कुनै शङ्का उठेमा न्यायालयको निर्णयले समाधान गरिनेछ ।

६. यस धाराका अनुच्छेद २, ३ र ४ मा निर्धारित गरिए बमोजिम रोजिएका न्यायाधीशहरूले वर्तमान विधानका धारा २, १७ (अनुच्छेद २) २० र २४ द्वारा चाहिने शर्तहरू पूरा गर्नेछन् । निजहरूले आफ्ना सहयोगीहरूसाथ पूर्ण समानताका आधारमा निर्णयमा भागलिने छन् ।

## धारा ३२

१. न्यायालयका प्रत्येक सदस्यले वार्षिक तलब पाउनेछन् ।

२. अध्यक्षले विशेष वार्षिक भत्ता पाउनेछन् ।

३. उपाध्यक्षले अध्यक्ष भएर काम गरेको प्रत्येक दिनको विशेष भत्ता पाउनेछन् ।

४. न्यायालयका सदस्यहरू बाहेक धारा ३१ अन्तर्गत रोजिएका न्यायाधीशहरूले आफूले काम गरेका प्रत्येक दिनका निमित्त हर्जाना पाउनेछन् ।

५. यी तलब, भत्ता र हर्जाना महासभाद्वारा ठेकिनेछन् । पदावधिभर यिनमा कमी हुन सक्नेछैन ।

६. रजिष्ट्रारको तलव न्यायालयको प्रस्तावमा महासभाले तोक्नेछ ।

७. महासभाद्वारा निमित्त विनियमहरूले न्यायालयका सदस्य र रजिष्ट्रारलाई पेन्सन दिइने शर्त तथा न्यायालयका सदस्यहरू र रजिष्ट्रारका यात्रा-व्यय फिर्ता दिने शर्त तोक्ने छन् ।

८. माथिका तलब, भत्ता र हर्जानामा कुनै कर लाग्ने छैन ।

## धारा ३३

न्यायालयको खर्च महासभाले निर्णय गरिदिए अनुसार संयुक्त राष्ट्रसंघले बेहोर्नेछ ।

## दोस्रो अध्याय
## न्यायालयको अधिकार क्षेत्र
## धारा ३४

१. न्यायालयका समक्ष राज्यहरू मात्र मुद्दाका पक्ष हुन सक्तछन् ।

२. न्यायालयले, आफ्ना नियमहरूका अधीनमा रही तथा सोसित मेल खाने गरी आफूकहाँ परेका मुद्दासित सरोकार भएका समाचारका निमित्त सार्वजनिक अन्तर्राष्ट्रिय संस्थाहरूलाई अनुरोध गर्न सक्तछ, तथा यस्ता संस्थाहरूले आफ्नै तत्परतामा पठाएका यस्ता समाचारहरू लिनेछ ।

३. कुनै सार्वजनिक अन्तर्राष्ट्रिय संस्थाका वैधानिक संलेखको गठन वा त्यसका अन्तर्गत प्रयोग गरिएको कुनै अन्तर्राष्ट्रिय सम्मति पत्र, न्यायालयमा परेको मुद्दामा सम्बन्धित हुन आएका बखत रजिष्ट्रारले सम्बन्धित सार्वजनिक अन्तर्राष्ट्रिय संस्थालाई यसबारे सूचना गरी सारा लिखित कारवाईका नक्कल पनि पठाइदिनेछन् ।

## धारा ३५

१. न्यायालय वर्तमान विधान अनुसार राज्यहरूका पक्षका लागि खुला रहनेछ ।

२. न्यायालय अरू राज्यहरूका निमित्त खुला रहने शर्त, लागू रहेका सन्धिहरूमा भएका विशेष उपबन्धहरूका अधिनमा रही, सुरक्षा परिषद्द्वारा निर्धारित गरिनेछन् ,

तर कुनै हालतमा पनि यस्ता शर्तले पक्षहरूलाई न्यायालय समक्ष असमानताको स्थान दिने छैनन् ।

संयुक्त राष्ट्रसंघको सदस्य नभएको कुनै राज्य मुद्दाको पक्ष भएमा न्यायालयको खर्च बापत यस पक्षले दिनुपर्ने रकम न्यायालयले तोक्नेछ । त्यस्तो राज्यले न्यायालयका खर्चको अंश बेहोर्ने गरेको रहेछ भने यो उपबन्ध लागू हुनेछैन ।

## धारा ३६

१. न्यायालयको अधिकार क्षेत्रमा, पक्षहरूले यसमा पेश गरेका सबै मुद्दा र विशेष गरी संयुक्त राष्ट्रको बडापत्रमा अथवा लागू रहेका सन्धि वा सम्मतिपत्र हरूमा उपबन्धित भएका सबै विषय समाविष्ट छन् ।

२. वर्तमान विधानमा राज्य पक्षहरूले जुनसुकै समयमा समान दायित्व स्वीकार गर्ने कुनै अरू राज्यको सम्बन्धमा देहाय सम्बन्धी सबै कानूनी झगडामा न्यायालयको क्षेत्राधिकार अनिवार्य रूपले स्वत: र विशेष सम्झौता बिना मान्छौं भनी घोषणा गर्न सक्तछन् ।

(क) सन्धिको ब्याख्या;

(ख) अन्तर्राष्ट्रिय कानूनको जुनसुकै प्रश्न;

(ग) ठहरिन आएमा, अन्तर्राष्ट्रिय दायित्व भङ्ग गर्न सक्ने कुनै तथ्य विद्यमान भएको;

(घ) अन्तर्राष्ट्रिय दायित्वको उल्लङ्घनका लागि गरिने क्षतिपूर्तिको रूप वा हद ।

३. माथि निर्दिष्ट गरिएका घोषणाहरू अनेक वा केही राज्यहरूका निमित्त बिना शर्त वा पारस्परिक शर्तमा वा केही समयका लागि, गरिन सक्तछन् ।

४. यस्ता घोषणाहरू संयुक्त राष्ट्रसंघका महासचिवसित थाती रहनेछन् । निजले यिनका नक्कलहरू विधानका पक्षहरू तथा न्यायालयका रजिष्ट्रारलाई पठाइदिनेछन् ।

५. स्थायी अन्तर्राष्ट्रिय न्यायालयका धारा ३६ अन्तर्गत बनेका तथा अझै लागू रहेका घोषणाहरू, वर्तमान विधानका पक्षहरूकाबीचमा झैं, ती चल्ने अवधिसम्म र तिनका शर्तमुताबिक अन्तर्राष्ट्रिय न्यायालयका अनिवार्य क्षेत्राधिकारभित्र स्वीकृत मानिनेछन् ।

६. न्यायालयको अधिकार क्षेत्र हो होइन भन्ने विवाद परेका अवस्थामा सो विषय न्यायालयको निर्णयद्वारा छिनिनेछ ।

## धारा ३७

लागू भइराखेको सन्धि वा सम्मतिपत्रले राष्ट्रसंघद्वारा खडा गरिएको विशेष अदालत वा स्थायी अन्तर्राष्ट्रिय न्यायालयमा कुनै विषयलाई सुम्पने प्रवन्ध भए सो विषय, वर्तमान विधानका पक्षहरूकाबीचमा झैं अन्तर्राष्ट्रिय न्यायालयमा पेश गरिनु पर्दछ ।

## धारा ३८

१. पेश भएका झगडाहरूको अन्तर्राष्ट्रिय कानून बमोजिम निर्णय गर्नुपर्ने काम भएको न्यायालयले देहायका प्रक्रियाको प्रयोग गर्नेछ:

(क) झगडिया राष्ट्रहरूले स्पष्ट रूपले मानेका नियम स्थापित गर्ने सामान्य वा विशेष अन्तर्राष्ट्रिय सम्मति पत्रहरू;

(ख) कानून मानिएको सामान्य व्यवहारको साक्षी प्रमाणको रूपमा अन्तर्राष्ट्रिय प्रचलनहरू;

(ग) सभ्य राष्ट्रहरूद्वारा मान्यता-प्राप्त कानूनका सामान्य सिद्धान्तहरू;

(घ) धारा ४९ का उपबन्धहरूका अधीनमा रही, कानूनका नियमहरूको निर्धारणका निमित्त सहायक साधनको रूपमा न्यायिक निर्णय तथा विभिन्न राष्ट्रका अत्यन्त उच्च योग्यतापूर्ण कानूनी प्रकाशकहरूका अध्यापन ।

२. पक्षहरूले मञ्जुर गरेमा यो उपबन्ध न्यायालयको न्यायपूर्वक तथा शुद्ध अन्तकरणले मुद्दा छिन्ने अधिकारको प्रतिकूल हुनेछैन ।

# तेस्रो अध्याय

# कार्यपद्धति

## धारा ३९

१. न्यायालयका अधिकारिक भाषा फ्रान्सेली र अंग्रेजी हुने छन् । मुद्दाको कारवाई फ्रान्सेली भाषामा चलाउनुपर्छ भनी पक्षहरू सहमत भए भने फैसला फ्रान्सेलीमा दिइनेछ, पक्षहरूको सम्मति अनुसार अंग्रेजी भाषामा पनि यही कुरा लागू हुनेछ ।

२. कुन भाषा प्रयोग गर्ने हो भन्ने सहमतिको अभावमा, प्रत्येक पक्षले, बहसमा आफूले रोजेको भाषा प्रयोग गर्न सक्तछ; तर न्यायालयको निर्णय फ्रान्सेली र अंग्रेजीमा दिइनेछ । यस अवस्थामा न्यायालयले साथ साथै दुई भाषाका मूल प्रतिलिपिमध्ये कुनचाहि अधिकारिक मान्ने हो भन्ने कुरा पनि निर्धारित गर्नेछ ।

३. कुनै पक्षको अनुरोधमा, न्यायआलयले फ्रान्सेली वा अंग्रेजीभन्दा बाहेकको भाषा त्यस पक्षलाई प्रयोग गर्ने अधिकार दिन सक्तछ ।

## धारा ४०

१. न्यायालय समक्ष मुद्दाहरू, अवस्था अनुसार, विशेष सम्झौताको सूचनाद्वारा वा रजिष्ट्रारलाई सम्बोधन गरिएको लिखित आवेदनद्वारा पेश गरिनेछन् । दुवै अवस्थामा झगडाको विषय र पक्षहरूको उल्लेख हुनेछ ।

२. रजिष्ट्रारले आवेदन सबै सम्बन्धित पक्षहरूलाई तुरन्तै पठाइदिनेछन् ।

३. निजले संयुक्त राष्ट्रसंघको सदस्यहरूलाई महासचिव मार्फत र न्यायालय सम्मुख उपस्थित हुनुपर्ने अरू राज्यहरूलाई पनि सूचना दिनेछन् ।

## धारा ४१

१. न्यायालयले, परिस्थितिले आवश्यक ठानेमा दुवै पक्षका आफ-आफ्ना हक सुरक्षित राख्न गरिनुपर्ने अल्पकालिक उपायहरू तोक्ने अधिकार पाउनेछ।

२. अन्तिम निर्णय नहोउन्जेल, सुझाउ गरिएका उपायहरूको सूचना पक्षहरूलाई र सुरक्षा-परिषद्लाई तुरन्तै दिइनेछ।

## धारा ४२

१. पक्षहरूको प्रतिनिधित्व अभिकर्ता (एजेन्ट) हरूले गर्नेछन्।

२. न्यायालय सम्मुख निजहरूले परामर्शदाता वा अधिवक्ताहरूको सहायता लिन सक्तछन्।

३. न्यायालय सम्मुख अधिकर्ता, परामर्शदाता र अधिवक्ताहरूले आफ-आफ्ना कर्तव्यको स्वतन्त्र प्रयोगलाई चाहिने विशेषाधिकार र उन्मुक्तिहरूको उपभोग गर्नेछन्।

## धारा ४३

१. कार्यपद्धतिमा दुई भाग हुनेछन्: लिखित र मौखिक।

२. लिखित कारवाईमा न्यायालय र पक्षहरूलाई दिएको स्मृतिपत्र, प्रति-स्मृतिपत्र र आवश्यक परेमा, जवाबहरूको लेखापढी तथा समर्थनका सबै कागजात र लेखत हुनेछन्।

३. यी लेखापढी रजिष्ट्रार मार्फत, क्रमानुसार तथा न्यायालयले तोकेको समयभित्र हुनेछन्।

४. एउटा पक्षले पेश गरेको प्रत्येक लिखितको प्रमाणिक नकल अर्को पक्षलाई पठाइनेछ।

५. मौखिक कारवाईमा न्यायालयद्वारा साक्षी, विशेषज्ञ, अभिकर्ता, परामर्शदाता, र अधिवक्ताको सुनवाइ हुनेछ।

## धारा ४४

१. अभिकर्ता, परामर्शदाता र अधिवक्ताहरूभन्दा बाहेकका व्यक्तिलाई  दिनुपर्ने सबै सूचनाका निमित्त न्यायालयले सोझै सूचना गर्नुपर्ने राज्य प्रदेशको सरकारलाई लेख्नेछ ।

२. घटनास्थलमा साक्षी प्रमाण प्राप्त गर्न उपायहरू गर्नुपर्दा यही उपबन्ध लागू हुनेछ ।

## धारा ४५

सुनवाई अध्यक्षको नियन्त्रणमा, अथवा निजले अध्यक्षता गर्न नसकेमा, उपाध्यक्षको नियन्त्रणमा हुनेछ । दुवैमध्ये कोही पनि अध्यक्ष हुन नसकेमा ज्येष्ठ न्यायाधीश अध्यक्ष हुनेछन् ।

## धारा ४६

न्यायालयले अन्यथा निर्णय नगरून्जेल, अथवा पक्षहरूले जनसाधारणको प्रवेश नहोस् भनी माग नगरुन्जेल, न्यायालयमा सुनवाइ खुला हुनेछ ।

## धारा ४७

१.  प्रत्येक सुनवाईमा टिपोट लेखिनेछन्, तथा तिनमा रजिष्ट्रार र अध्यक्षले हस्ताक्षर गर्नेछन् ।

२. यी टिपोटहरू मात्र प्रामाणिक हुनेछन् ।

## धारा ४८

न्यायालयले मुद्दा सञ्चालन गर्ने आदेश दिनेछ, प्रत्येक पक्षद्वारा आफ्ना तर्क समाप्त गर्ने तरिका र समय निर्णय गर्नेछ, तथा साक्षी प्रमाण लिने सम्बन्धी सबै प्रबन्ध मिलाउनेछ ।

## धारा ४९

सुनवाइ थालिनुभन्दा अगावै पनि न्यायालयले कुनै कागजात पेश गर्न वा कुनै विवरण दिन अभिकर्तालाई आदेश गर्ने सक्तछ । आदेश पालन गर्न इन्कार गरिएमा त्यसको औपचारिक टिपोट राखिनेछ ।

## धारा ५०

न्यायालयले आफूले छानेका कुनै व्यक्ति निकाय, विभाग, आयोग, वा अरू संस्थालाई छानविन चलाउने वा विशेषज्ञको मत दिने भारा सुम्पन सक्तछ ।

## धारा ५१

धारा ३० मा निर्दिष्ट कार्यपद्धतिका नियमहरूमा न्यायालयले निर्धारित गरेका शर्त अनुसार, सुनवाईका बखत साक्षी र विशेषज्ञहरूलाई कुनै पनि सरोकारवाला प्रश्न गरिन सक्तछन् ।

## धारा ५२

न्यायालयले कुनै कामका निमित्त तोकेको समयभित्र साक्षी प्रमाणहरू पाइसकेपछि, अर्को पक्षले मञ्जुर नगरुन्जेल एउटा पक्षले पेश गर्न चाहेको कुनै मौखिक वा लिखित साक्षी प्रमाण पेश गर्न अस्वीकार गर्न सक्तछ ।

## धारा ५३

१. पक्षहरूमध्ये एउटा न्यायालय सम्मुख उपस्थित भएन, अथवा त्यसले आफ्ना मुद्दामा प्रतिवाद गर्न सकेन भने, अर्को पक्षले आफ्नो दावाको पक्षमा निर्णय गर्न न्यायालयलाई अनुरोध गर्न सक्तछ ।

२. यसो गर्नुभन्दा अगाडि न्यायालयले धारा ३६ र ३७ मुताविक आफ्नो क्षेत्राधिकार छ भन्ने मात्र होइन कि त्यो दाबा पनि तथ्य र कानूनमा राम्ररी आधारित छ भन्ने कुरामा आफू सन्तुष्ट हुनुपर्छ ।

## धारा ५४

१. न्यायालयको नियन्त्रणमा रही अभिकर्ता, परामर्शदाता, अधिवक्ताहरूले मुद्दा पेश गर्ने काम सिध्याइसकेपछि अध्यक्षले सुनवाइ बन्द भएको घोषित गर्नेछन् ।

२. न्यायालय फैसला बिचार गर्न विश्राम गर्नेछ ।

३. न्यायालयका विचार विमर्श निजीरूपले हुनेछ तथा गोप्य रहनेछ ।

## धारा ५५

१. सारा विवाद उपस्थित न्यायाधीशको बहुसंख्याबाट निर्णय गरिनेछन् ।

२. मत समान भएको अवस्थामा अध्यक्ष वा निजका स्थानमा काम गर्ने न्यायाधीशले निर्णायक मत दिनेछन् ।

## धारा ५६

१. फैसलाले निर्णय आधारित भएका कारणहरू जनाउनेछ ।

२. यसमा निर्णयमा भागलिने न्यायाधीशहरूको नाम हुनेछ ।

## धारा ५७

फैसलामा पूर्णत: वा अंशत: न्यायाधीशहरूको सर्वसम्मत राय हुन सकेन भने जुनसुकै न्यायाधीशले पनि भिन्न राय दिन पाउनेछन् ।

## धारा ५८

फैसलामा अध्यक्ष र रजिष्ट्रारले हस्ताक्षर गर्नेछन् । अभिकर्ताहरूलाई सूचना दिएर यो खुला न्यायालयमा पढिनेछ ।

## धारा ५९

न्यायालयको निर्णयका पक्षकाबीच र त्यो विशेष मुद्दामा बाहेक अन्यत्र बाध्य हुनेछैन।

## धारा ६०

फैसला अन्तिम र अपील नलाग्ने हुन्छ । फैसलाको अर्थ वा परिधि बारे विवाद उठेमा न्यायालयले कुनै पक्षको अनुरोधमा यसको अर्थ लगाइदिनेछ ।

## धारा ६१

१. निर्णायक हुन सक्ने रूपको कुनै तथ्य जो फैसला भएका बखत न्यायालयलाई र दोहोर्‍याइ पाउँ भन्ने पक्षलाई पनि थाहा नभएको आधारमा फैसला दोहोर्‍याउने आवेदन दिन सकिन्छ । तर हर हालतमा यस्तो अज्ञानता लापरवाहीले भएको हुनु हुँदैन ।

२. नयाँ तथ्यको अस्तित्वलाई स्पष्ट रूपले खोली दोहोर्‍याउनाका निमित्त यसमा भएको प्रकृतिलाई मान्यता दिंदै उक्त आधारमा आवेदन स्वीकार गर्न हुने कुरा घोषित गरेर न्यायालयको निर्णयद्वारा दोहोर्‍याउने कारवाई चालू गरिनेछ ।

३. न्यायालयले, दोहोर्‍याउने कारवाई स्वीकार गर्नुभन्दा अगाडि निर्णयका शर्तहरूको पूर्वपालन खोज्नेछ ।

४. ढिलोमा, नयाँ तथ्य फेला परेका ६ महिनाभित्र दोहोर्‍याउने आवेदन गरिसक्नुपर्छ ।

५. फैसलाका मितिले दश वर्ष बितिसकेपछि दोहोर्‍याउने आवेदन लाग्न सक्तैन ।

## धारा ६२

१. मुद्दाको निर्णयद्वारा असर पर्न सक्ने कानूनी रूपको स्वार्थ छ भन्ने कुनै राज्यले बिचार गरेमा त्यसले हस्तक्षेप गर्ने अनुमति पाउनलाई अनुरोध पेश गर्न सक्तछ ।

२. यस अनुरोधमाथि निर्णय गर्नु न्यायालयको काम हुनेछ ।

## धारा ६३

१. मुद्दामा सम्बन्धित बाहेक अरू राज्यहरू पक्ष भएका परम्पराहरूको निर्माण शंकास्पद भएमा रजिष्ट्रारले यस्ता सबै राज्यहरूलाई तुरन्तै सूचना गर्नेछन् ।

२. यसरी सूचित गरिएको प्रत्येक राज्यले कारवाईमा हस्तक्षेप गर्ने हक पाउँछ, तर यसले यो हक प्रयोग गरेमा फैसलाले बनाएको परम्परा यसमाथि समान रूपले बाध्य हुनेछ ।

## धारा ६४

न्यायालयले अन्यथा निर्णय नगरेमा प्रत्येक पक्षले आफ्-आफ्ना खर्च बेहोर्ने छ ।

## चौथो अध्याय

## मन्त्रणा-मत

## धारा ६५

१. संयुक्त राष्ट्रसंघको बडापत्र मुताविक अथवा सो अन्तर्गत अनुरोध गर्न अधिकार पाएको जुनसुकै निकायको अनुरोध कुनै कानूनी प्रश्नमाथि न्यायालयले राय सल्लाह दिन सक्तछ ।

२. न्यायालयले राय सल्लाह मागिएका प्रश्नहरू, राय चाहिएका प्रश्नको ठीक ठीक विवरण तथा प्रश्न माथि प्रकाश पार्ने किसिमका सबै लिखतसहितको, लिखत अनुरोधद्वारा न्यायालय समक्ष पेश गरिनेछन् ।

## धारा ६६

१. राय सल्लाह निमित्त अनुरोधको सूचना न्यायालय समक्ष उपस्थित हुन पाउने सबै राज्यलाई तुरन्त दिइनेछ ।

२. प्रश्नमा जानकारी दिन सक्ने देखिएको, न्यायालय समक्ष वा न्यायालयले अथवा सो नबसेको बखत अध्यक्षले बिचार गरिएको अन्तर्राष्ट्रिय संस्था समक्ष उपस्थित हुन पाउने कुनै राज्यलाई, अध्यक्षले तोकिदिने समयभित्र, लिखित विवरण प्राप्त गर्न वा प्रश्न सम्बन्धी मौखिक विवरण, सो प्रयोजनका निमित्त बसेको खुला बैठकमा, सुन्न न्यायालय तयार हुनेछ भन्ने पनि रजिष्ट्रारले विशेष तथा प्रत्यक्ष पत्र-व्यवहारद्वारा सूचना गर्नेछन् ।

३. न्यायालय समक्ष उपस्थित हुन पाउने कुनै यस्तो राज्यले यस धाराको अनुच्छेद २ मा निर्दिष्ट विशेष पत्र पाउन नसकेको भए, त्यस्तो राज्यले लिखित विवरण पेश गर्ने वा सुनवाइ होस् भन्ने इच्छा प्रकट गर्न सक्तछ; तथा न्यायालयले त्यसमाथि निर्णय गर्नेछ ।

४. लिखित वा मौखिक विवरण वा दुवै पेश गरिसकेका राज्य र संस्थाहरूलाई अरू राज्य वा संस्थाहरूले दिएका विवरणमा, न्यायालयले अथवा सो नबसेको बखत अध्यक्षले प्रत्येक विशेष मुद्दाका हकमा तोकेअनुसार हदसम्म र समयको सीमाभित्र, टीका टिप्पणी गर्ने अनुमति प्राप्त हुनेछ । तद अनुसार, विवरण पेश गरिसकेका राज्य र संस्थाहरूलाई रजिष्ट्रारले जुनसुकै यस्ता लिखित विवरण यथासमयमा लेखापढीद्वारा पठाउनेछन् ।

## धारा ६७

महासचिव र संयुक्त राष्ट्रसंघका सदस्यका, अरू राज्यका, तथा निकटतम सम्बन्धित अन्तर्राष्ट्रिय संस्थाहरूका प्रतिनिधिहरूलाई सूचना दिइसकेपछि न्यायालयले आफ्नो राय सल्लाह खुला न्यायालयमा दिनेछ ।

## धारा ६८

न्यायालयलाई, आफ्ना परामर्श सम्बन्धी कार्य गर्दा, विवादास्पद मुद्दाहरूमा लागू हुन सक्ने भनी आफूले मान्यता दिएको हदसम्म लागू हुने वर्तमान विधानका उपबन्धहरूले अरू निर्देशित गर्नेछन् ।

## पाँचौं अध्याय

## संशोधन

## धारा ६९

वर्तमान विधानका पक्ष भएका तर संयुक्त राष्ट्रसंघका सदस्य नभएका राज्यहरूले भागलिने सम्बन्धमा, सुरक्षा परिषद्को सिफारिसमा महासभाले प्रयोग गरेका कुनै उपबन्धसम्मका अधिनमा रही, वर्तमान विधानमा संशोधन उही कार्यपद्धतिबाट

गरिनेछन जो संयुक्त राष्ट्रसंघको बडापत्रद्वारा त्यस बडापत्रको संशोधनका लागि प्रयुक्त छ ।

## धारा ७०

आफूले आवश्यक ठहराएमा, वर्तमान विधानको संशोधन गर्न, धारा ६९ को उपबन्ध अनुरूप बिचारका निमित्त महासचिवलाई लिखित सूचनाद्वारा प्रस्ताव गर्ने अधिकार न्यायालयले पाउनेछ ।